# अन्तर्राष्ट्रिय आणविक उर्जा एजेन्सी (आईएइए) को विधान, १९५७

यो विधान २३ अक्टोबर १९५६ मा संयुक्त राष्ट्र संघीय मूख्यालयमा आयोजित भएको अन्तर्राष्ट्रिय आणविक उर्जा एजेन्सीको विधान सम्बन्धी सम्मेलनबाट पारित गरिएको थियो । यो विधान २९ जुलाई १९५७ देखि लागू भएको हो । यो विधान ३ पटकसम्म सम्शोधन गरिएको छ: ३१ जनवरी १९६३ मा, १ जुन १९७३ मा र २८ डिसेम्बर १९८९ मा सबै संशोधनहरु धारा ६ मा भएका थिए ।

## धारा १

## एजेन्सीको स्थापना

हामी यहाँ उपस्थित पक्षहरू देहायका शर्तहरूको अधीनमा रही अन्तर्राष्ट्रिय आणविक उर्जा एजेन्सी (अब उप्रान्त 'एजेन्सी' भनी सम्बोधित) को स्थापना गर्दछौं ।

## धारा २

## उद्देश्य

यो एजेन्सी विश्वमा शान्ति, स्वास्थ्य एवं सम्पन्नताका लागि आणविक उर्जाबाट हुन सक्ने योगदानलाई अभिवृद्धि एवं विस्तारित गर्न प्रयासरत रहने छ । एजेन्सीले आफनो सामर्थ्यले भ्याएसम्म एजेन्सीद्वारा अथवा यसको अनुरोधमा वा यस मातहतको निरीक्षण वा नियन्त्रण रहने गरी प्राप्त भएको सहायता कुनै किसिमको सैनिक उद्देश्यका लागि प्रयोग नहुने सुनिश्चितता गर्नेछ ।

## धारा ३

## कार्यहरू

क. यो एजेन्सी अधिकारसम्पन्न छ :

(१) विश्वमा आणविक उर्जाको शान्तिपूर्ण उपयोगका लागि अनुसन्धान, विकास एवं व्यवहारिक कार्य-योजनाहरूलाई सघाउन र प्रोत्साहित गर्नका लागि; र आग्रह गरिएको अवस्थामा, एजेन्सीको एक सदस्यले अर्को सदस्यको हकमा सेवाहरूको अनुपालन वा सामग्री, उपकरण वा संयन्त्र (फेसिलिटि) हरुको आपूर्तिको सुनिश्चितताका निम्ति मध्यस्थकर्ताको रुपमा कार्य गर्नका लागि; तथा आणविक उर्जाको शान्तिपूर्ण प्रयोगमा लक्षित अनुसन्धान, विकास वा व्यवहारिक कार्यान्वयनमा लाभदायी हुने कुनै पनि प्रायोगिक व्यवहार वा सेवा सञ्चालन गर्नका लागि;

(२) विश्वका अल्प-विकसित क्षेत्रका आवश्यकताहरूप्रति विशेष ध्यान दिँदै विद्युत शक्ति उत्पादन गर्ने समेतको आणविक उर्जाको शान्तिपूर्ण प्रयोगसम्बन्धी अनुसन्धान गर्न र विकास वा व्यवहारिक प्रयोग गर्ने सन्दर्भमा आवश्यकताहरू परिपूर्तिका निमित्त पदार्थ, सेवा, उपकरण र संयन्त्र सुविधाहरूको उपलब्धताका निमित्त, प्रस्तुत विधान अनुकूल प्रावधान निर्माण गर्नका लागि;

(३) आणविक उर्जाको शान्तिपूर्ण प्रयोगसम्बन्धी वैज्ञानिक एवं प्राविधिक सूचनाहरूको आदान-प्रदानलाई सुदृढ बनाउनका लागि;

(४) आणविक उर्जाको शान्तिपूर्ण प्रयोगका सन्दर्भमा वैज्ञानिक र विशेषज्ञहरूको आदानप्रदान एवं प्रशिक्षणलाई प्रोत्साहित गर्न;

(५) एजेन्सीबाट अथवा एजेन्सीको अनुरोध वा सुपरिवेक्षण वा नियन्त्रणमा स्थापित वा उपलब्ध गराइएको विशेष विखण्डनीय र अन्य पदार्थ, सेवा, उपकरण, संयन्त्र, र सूचनाहरुको प्रयोग सैनिक क्षमता अभिवृद्धिको उद्देश्यले नभएको सुनिश्चित गर्न तयार गरिएको सुरक्षा (सेफगार्ड) संयन्त्रको स्थापना र प्रशासन प्रबन्धन गर्न; र विभिन्न पक्षहरूको अनुरोधमा, कुनै द्विपक्षीय वा, बहुपक्षीय बन्दोबस्तका लागि,

वा कुनै राष्ट्रको अनुरोधमा, सो राष्ट्रले आणविक उर्जाको क्षेत्रमा गर्ने कुनै पनि गतिविधिहरूमा सुरक्षा संयन्त्रको प्रयोग गर्न;

(६) संयुक्त राष्ट्र संघका सक्षम निकायहरू र सम्बन्धित विशेषज्ञ एजेन्सीहरूको परामर्शमा, र सम्भव हुने भएमा संयुक्त रुपमा मिलेर स्वास्थ्यको संरक्षणको सुरक्षा मापदण्ड तथा जीवन र सम्पत्तिप्रतिको जोखिम न्यूनतम पार्ने मापदण्ड ( श्रम अवस्थाका लागि निर्धारित यस्ता मापदण्ड समेत) स्थापित वा ग्रहण गर्ने, तथा आफ्ना गतिविधि सञ्चालन गर्दा यी मापदण्डहरूको कार्यान्वयनका लागि र त्यससंगै एजेन्सीद्वारा वा त्यसको अनुरोधमा त्यसको सुपरिवेक्षणमा वा त्यसको नियन्त्रणमा स्थापित र उपलब्ध गराइएका पदार्थ, सेवा, उपकरण, संयन्त्र र सूचना प्रयोग गरी सञ्चालन गरिने अभियान (अप्रेशन) हरूमा यी मापदण्डहरूको कार्यान्वयन उपलब्ध गराउने; एवं पक्षहरूको अनुरोधमा, कुनै द्विपक्षीय वा बहुपक्षीय बन्दोबस्तका लागि, वा कुनै राज्यको अनुरोधमा, सो राज्यले आणविक उर्जाको क्षेत्रमा गर्ने राष्ट्रिय गतिविधिहरूको सुरक्षा संयन्त्रको रेखदेख गर्न यी मापदण्डहरूको कार्यान्वयन उपलब्ध गराउन;

(७) सम्बन्धित क्षेत्रमा उपलब्ध संयन्त्र, प्लान्ट र उपकरण अपर्याप्त भएमा वा अग्राह्य आधारहरूमा मात्र उपलब्ध हुन सक्ने अवस्था भएमा आफना आधिकारिक कार्यक्रमहरू सञ्चालन गर्न आवश्यक संयन्त्र, प्लान्ट र उपकरण ग्रहण वा स्थापित गर्न ।

ख. यसलाई निर्दिष्ट कार्य सञ्चालन गर्न एजेन्सीले देहाय बमोजिम गर्नेछ :

(१) शान्ति र अन्तर्राष्ट्रिय सहयोग प्रवर्द्धनका लागि संयुक्त राष्ट्रसंघको उद्देश्य र सिद्धान्त अनुकूल रहेर, र सुरक्षित विश्वव्यापी निःशस्त्रीकरणको स्थापनालाई अगाडि बढाउन संयुक्त राष्ट्रसंघीय नीतिहरू अनुरुप रहेर, तथा उल्लेखित नीतिहरूको सन्दर्भमा भए गरेका अन्तर्राष्ट्रिय सन्धि-सम्झौताहरूको मातहत रहेर आफना कार्यक्रम र गतिविधिहरू सञ्चालन गर्ने;

(२) एजेन्सीलाई प्राप्त हुन आएका विशेष परमाणु विच्छेदक पदार्थ आदिको प्रयोग, केवल शान्तिपूर्ण उद्देश्यका लागि मात्र भइरहेको सुनिश्चित गर्नका लागि ती पदार्थको प्रयोगउपर नियन्त्रण स्थापित गर्ने;

(३) विश्वका अल्प विकसित क्षेत्रहरूका विशेष आवश्यकतालाई दृष्टिगत गरी, विश्वका हरेक क्षेत्रमा यथोचित सदुपयोग र यथासम्भव सर्वतोमुखी लाभ हासिल हुने गरी आफना स्रोतसाधनहरूको व्यवस्थापन गर्ने;

(४) आफना कार्य एवं गतिविधि सम्बन्धी प्रतिवेदन वार्षिक रुपले संयुक्त राष्ट्रसंघ महासभा तथा आवश्यकता अनुसार, सुरक्षा परिषद् समक्ष प्रस्तुत गर्ने; एजेन्सीले सञ्चालन गरेका गतिविधिउपर सुरक्षा परिषद्को क्षेत्राधिकारभित्र रहने गरी केही कुनै सवाल उठेमा, एजेन्सीले अन्तर्राष्ट्रिय शान्ति र सुरक्षा बहालीका निम्ति मूल उत्तरदायित्व बहन गर्ने निकायका रुपमा रहेको सुरक्षा परिषद्लाई सूचित गर्नेछ; तथा प्रस्तुत परिच्छेद 'ग' समेत अन्य प्रावधानहरूको आधार लिन सक्नेछ ।

(५) विषयगत क्षेत्राधिकार अनुसार, सम्बन्धित प्रतिवेदन आर्थिक तथा सामाजिक परिषद् र संयुक्त राष्ट्रसंघीय निकाय समक्ष प्रस्तुत गर्ने ।

ग. उल्लेखित कार्य एवं गतिविधि सञ्चालन गर्ने क्रममा एजेन्सीले कुनै राजनीतिक, आर्थिक, सैनिक, वा प्रस्तुत विधानका प्रावधानहरूसित बाझिने अवस्था रहने गरी सम्बन्धित कुनै सदस्यसँग सहयोग लिनेदिने छैन ।

घ. प्रस्तुत विधानमा उल्लेखित प्रावधान तथा विधान मातहत रही राज्य वा राज्य-समूह र एजेन्सीबीच भएका सम्झौता अन्तर्गत एजेन्सीबाट हुने कार्य एवं गतिविधिहरू राज्यहरूको सार्वभौम अधिकारको उचित सम्मान गर्दै सञ्चालन गरिनेछन् ।

## धारा ४

## सदस्यता

क. प्रस्तुत विधान हस्ताक्षरका लागि खुला गरिएको नब्बे दिनभित्र यसमा हस्ताक्षर गर्ने र अनुमोदनको औपचारिक लिखत प्रस्तुत गर्ने संयुक्त राष्ट्रसंघ वा कुनै पनि विशिष्टिकृत संघ-संस्थाका सदस्य-राष्ट्र एजेन्सीका प्रारम्भिक सदस्य हुनेछन् ।

ख. संयुक्त राष्ट्रसंघ वा कुनै विशिष्टिकृत संस्थाको सदस्य राष्ट्र वा गैर-सदस्य राष्ट्रले प्रस्तुत विधानलाई स्वीकृत गरेको औपचारिक लिखत पेश गरेमा निर्देशक समिति (बोर्ड अफ डाइरेक्टर्स) को सिफारिशमा महासम्मेलन (जनरल कन्फेरेन्स) ले सदस्यता अनुमोदन गरिसकेपछि ती राष्ट्रहरू एजेन्सीका अन्य सदस्य हुनेछन् । कुनै राज्यलाई सदस्यताका

लागि सिफारिश एवं अनुमोदन गर्न निर्देशक समिति र महासम्मेलनले एजेन्सीको सदस्यता वापत बहन गर्नुपर्ने उत्तरदायित्व निर्वाह गर्न सम्बन्धित राष्ट्र योग्य र तत्पर भए नभएको तथा संयुक्त राष्ट्रसंघको बडापत्रका उद्देश्य एवं सिद्दान्तहरू अनुरुप काम गर्ने क्षमता एवं तत्परता रहे नरहेको निर्धारण गर्नेछन् ।

ग. यो एजेन्सी यसका सम्पूर्ण सदस्यहरूको सार्वभौम समानताको सिद्धान्तमा आधारित छ र सम्पूर्ण सदस्यहरूले सदस्यता बापत उनीहरूलाई प्राप्त अधिकार एवं लाभहरूप्रति सबैलाई सुनिश्चितता प्रदान गर्न यस विधानअनुसार उनीहरूद्वारा अपेक्षित दायित्वहरू पूर्ण आस्था एवं विश्वाससाथ निर्वाह गर्नेछन् ।

## धारा ५

## महासम्मेलन

क. महासम्मेलनमा नियमित वार्षिक सभामा उपस्थित हुने सम्पूर्ण सदस्य प्रतिनिधिहरू रहनेछन् र यस किसिमको विशेष सभा (स्पेशल सेसन) निर्देशक समिति वा बहुमत सदस्यहको अनुरोधमा महानिर्देशकले संयोजन गर्नेछन् । यस्ता सभा महासम्मेलनले अन्यत्र निर्धारण गरेकोमा बाहेक एजेन्सीको प्रधान कार्यालयमा आयोजना हुनेछन् ।

ख. यस्तो विशेष सभामा, प्रत्येक सदस्यको प्रतिनिधित्व एकजना प्रतिनिधिले गर्नेछन् जसको साथमा वैकल्पिक प्रतिनिधि एवं परामर्शदाताहरू रहन सक्नेछन् । कुनै पनि प्रतिनिधि मण्डलको सहभागिताको खर्च सम्बन्धित सदस्यबाटै ब्यहोरिनेछ ।

ग. महासम्मेलनले एकजना सभापति र सभाको प्रारम्भमा आवश्यक हुन सक्ने अन्य पदाधिकारीको निर्वाचन गर्नेछ । उनीहरूले सभाको अवधिसम्म कार्यभार सम्हाल्नेछन् । महासम्मेलनले यस विधानका प्रावधानहरू अनुरुप रही आफनै नियमअनुसारको कार्यविधि अपनाउनेछ । हरेक सदस्यलाई एक मतको अधिकार रहनेछ । यस विधानको धारा १४ को अनुच्छेद ज, धारा १८ को अनुच्छेद ग र धारा १९ को अनुच्छेद ख मा उल्लेखित प्रावधान अनुरुप निर्णयहरू गर्नुपर्ने भएमा सभामा उपस्थित र मतदान गर्नेहरूको दुई तिहाइ मतबाट गर्नुपर्नेछ । अन्य प्रश्नहरू, अतिरिक्त प्रश्नहरुको निर्धारणसमेत वा दुइ तिहाई बहुमतबाट निर्णय गर्नुपर्ने सवालहरुको वर्गीकरण निर्धारण सम्बन्धी निर्णयहरूउपस्थित भई मतदान गर्ने सदस्यहरूको बहुमतको आधारमा हुनेछ । बहुमत सदस्यबाट सम्मेलनको कोरम पूरा हुनेछ ।

घ. महासम्मेलनले यस विधानको क्षेत्रभित्र पर्ने कुनै पनि विषय वा मामिला सम्बन्धमा अथवा यस विधान मातहत गठित कुनै पनि अंग वा निकायको अधिकार र कार्यहरूबारे छलफल गर्न सक्नेछ, तथा एजेन्सी वा निर्देशक समिति वा दुवैसमक्ष यस्ता कुनै पनि विषय वा मामिलाहरूबारे सदस्यताको सिफारिश गर्न सक्नेछ ।

ङ. महासम्मेलनले देहायबमोजिम गर्नेछ :

(१) धारा ६ बमोजिम निर्देशक समितिका सदस्यहरूको निर्वाचन गर्ने;

(२) धारा ४ बमोजिम राज्यहरूको सदस्यता अनुमोदन गर्ने;

(३) धारा १९ बमोजिम कुनै पनि सदस्यलाई सदस्यता बापत प्राप्त विशेषाधिकार एवं सुविधाहरू निलम्बन गर्ने;

(४) समितिको वार्षिक प्रतिवेदन उपर छलफल गर्ने;

(५) धारा १४ बमोजिम समितिद्वारा सिफारिश गरिएको एजेन्सीको आयव्यय प्रतिवेदन अनुमोदन गर्ने अथवा समग्र वा आंशिक फेरबदलको सिफारिशसहित पुनः महासम्मेलनमा फिर्ता पठाउनुपर्ने गरी समितिमा फिर्ता पठाउने छ;

(६) धारा १२ को परिच्छेद ग संग सम्बन्धित बाहेक, एजेन्सी र संयुक्त राष्ट्रसंघबीचको सम्बन्ध कायम गर्ने सम्झौता बमोजिम राष्ट्रसंघ समक्ष प्रस्तुत गर्नुपर्ने प्रतिवेदनहरू अनुमोदन गर्ने, अथवा आवश्यक सिफारिशसहित समितिमा फिर्ता पठाउने छ;

(७) धारा १६ बमोजिम एजेन्सी र संयुक्त राष्ट्रसंघ एवं अन्य संघ-संस्थाहरूबीच हुने सम्झौता वा सम्झौताहरू अनुमोदन गर्ने वा पुनः महासम्मेलनमा पठाउनु पर्ने गरी आवश्यक सिफारिशसहित समितिमा फिर्ता पठाउने छ ;

(८) धारा १४ परिच्छेद छ बमोजिम, समितिका अधिकार सम्बन्धी नीति-नियम र सीमान्तताहरू अनुमोदन गर्ने ; र, धारा १४ अनुच्छेद च बमोजिम सो अनुच्छेदमा उल्लेखित कोषको परिचालन सम्बन्धी व्यवस्था अनुमोदन गर्ने;

(९) धारा १८ अनुच्छेद ग बमोजिम प्रस्तुत विधानका संशोधनहरू अनुमोदन गर्ने ;

(१०) धारा ७ अनुच्छेद क बमोजिम महानिर्देशकको नियुक्ति अनुमोदन गर्ने ;

च. महासम्मेलनलाई देहायका अधिकार प्राप्त हुनेछन् ;

(१) समितिबाट यही उद्देश्यले लिखित रूपमा महासम्मेलनमा प्रस्तुत कुनै पनि विषयहरू उपर निर्णय लिने;

(२) समितिबाट छलफल हुनका लागि प्रस्तुत विषयवस्तु प्रस्ताव तथा एजेन्सीको काम कारवाहीसंग जोडिएको कुनै पनि विषयवस्तु सम्बन्धमा समितिले पेश गरेको प्रतिवेदनको आधारमा गरिएको अनुरोध सम्बन्धमा प्रस्ताव गर्ने ।

## धारा ६

## निर्देशक समिति

क. निर्देशक समितिको गठन देहाय बमोजिम हुनेछ :

(१) पदावधि समाप्त हुदै गरेको निर्देशक समितिले स्रोत पदार्थको उत्पादन समेत आणविक उर्जाको प्राविधिक ज्ञानमा सर्वाधिक दक्षता हासिल गरेका दशजना सदस्यहरू र उल्लेखित दशजना सदस्यहरू रहेको स्थानबाहेकका देहायको प्रत्येक भौगोलिक क्षेत्रमा रहेका श्रोत पदार्थको उत्पादन समेत आणविक उर्जाको प्रविधिमा उच्च दक्ष सदस्यहरूलाई निर्देशक समितिको सदस्यका लागि नियुक्ति गर्नेछ :

(१) उत्तर अमेरिका

(२) ल्याटिन अमेरिका

(३) पश्चिमी यूरोप

(४) पूर्वी यूरोप

(५) अफ्रिका

(६) मध्यपूर्व एवं दक्षिण एशिया

(७) दक्षिणपूर्व एशिया एवं प्रशान्त क्षेत्र

(८) सुदूर पूर्व

(२) महासम्मेलनले निर्देशक समितिको सदस्यताका लागि निर्वाचन गर्नेछः

(क) यसै धाराको उप-अनुच्छेद क.१. मा उल्लेख भए बमोजिमका क्षेत्रहरुबाट सम्मानपूर्वक सम्पूर्ण सदस्यहरूको समान प्रतिनिधित्व समितिमा हुने गरी, ल्याटिन अमेरिकाबाट पाँच जना प्रतिनिधि, पश्चिमी यूरोपबाट चारजना प्रतिनिधि, पूर्वी यूरोपबाट तीनजना प्रतिनिधि, अफ्रिका क्षेत्रबाट चारजना प्रतिनिधि, मध्यपूर्व एवं दक्षिण एशियाबाट दुईजना प्रतिनिधि, दक्षिणपूर्व एसिया एवं प्रशान्त क्षेत्रबाट एकजना प्रतिनिधि, तथा सुदूर पूर्व क्षेत्रबाट एकजना प्रतिनिधिसमेत निर्देशक समितिमा सधैं यसबमोजिम समावेश हुने गरी बीसजना सदस्य निर्वाचित गर्नेछ । यस निर्वाचन पद्धतिबाट एक कार्यकालको लागि निर्वाचित कुनै पनि सदस्य सोही निर्वाचन पद्दतिबाट दोस्रो कार्यकालका लागि पुनःनिर्वाचित हुन योग्य मानिने छैन; तथा

(ख) देहायका क्षेत्रहरूमा रहेका सदस्यहरूमध्येबाट थप एकजना सदस्य निर्वाचित गर्नेछ :

मध्यपूर्व तथा दक्षिण एसिया,

दक्षिणपूर्व एसिया एवं प्रशान्त क्षेत्र,

सुदूर-पूर्व;

(ग) देहायका क्षेत्रमा रहेका सदस्यहरूमध्येबाट थप एकजना सदस्य निर्वाचित गर्नेछ :

अफ्रिका

मध्यपूर्व तथा दक्षिण एसिया

दक्षिणपूर्व एसिया तथा प्रशान्त क्षेत्र ।

ख. यसै धाराको उप-अनुच्छेद क. १ मा उल्लेख भए बमोजिमको नियुक्ति महासम्मेलनको प्रत्येक नियमित वार्षिक सभा शुरु हुनुभन्दा पहिले साठी दिनमा नघटाई हुनेछ । यसै

धाराको उप-अनुच्छेद क. २ मा उल्लेख भए बमोजिम भएको निर्वाचन महासम्मेलनको नियमित वार्षिक सभाले गर्नेछ ।

ग. यसै धाराको उप-अनुच्छेद क.१. बमोजिम निर्देशक समितिमा प्रतिनिधित्व गर्ने सदस्यहरू उनीहरूको नियुक्ति पश्चात्को महासम्मेलनको आगामी नियमित वार्षिक सभा अन्त्य भए लगत्तैदेखि महासम्मेलनको त्यसपछिको अर्को नियमित वार्षिक सभाको अन्त्यसम्म सो पदमा बहाल रहनेछन् ।

घ. यसै धाराको उप-अनुच्छेद क.२ बमोजिम निर्देशक समितिमा प्रतिनिधित्व गर्ने सदस्यहरु उनीहरू निर्वाचित भएको महासम्मेलनको नियमित वार्षिक सभा अन्त्य भए लगत्तैदेखि त्यसपछि हुने महासम्मेलनको दोस्रो नियमित वार्षिक सभा अन्त्य हुँदासम्म सो पदमा बहालमा रहनेछन् ।

ङ. निर्देशक समितिमा प्रत्येक सदस्यलाई एक मतको अधिकार रहनेछ । एजेन्सीको बजेट राशिको परिमाण सम्बन्धी निर्णय धारा १४ अनुच्छेद ज मा उल्लेख भएबमोजिम उपस्थित भई मतदान गर्नेहरूको दुई तिहाइ बहुमतबाट हुनेछ । अतिरिक्त सवाल अथवा दुई तिहाइ बहुमतबाट निर्णय हुनुपर्ने मामिलाहरूको वर्गीकरण निर्धारण समेत अन्य मामिलासम्बन्धी निर्णय उपस्थित भई मतदान गर्नेहरूको बहुमतबाट हुनेछ । समितिका सम्पूर्ण सदस्यमध्ये दुई तिहाइको उपस्थिति त्यसको गणपूरक संख्या हुनेछ ।

च. यस विधानमा उल्लेख भएबमोजिम महासम्मेलनप्रति उत्तरदायी रहँदै यस विधान बमोजिम एजेन्सीका काम कारवाहीहरू सञ्चालन गर्ने अधिकार निर्देशक समितिलाई हुनेछ ।

छ.. निर्देशक समिति आफूले तोकेको समयमा बैठक बस्नेछ । यस्ता बैठकहरू समितिले अन्यत्र निर्धारण गरेकोमा बाहेक एजेन्सीको प्रधान कार्यालयमा बस्नेछन् ।

ज. निर्देशक समितिले आफ्ना सदस्यहरूमध्येबाट एकजना सभापति एवं अन्य पदाधिकारी छनोट गर्नेछ, तथा यस विधानमा भएको व्यवस्था बमोजिम आफनो कार्यविधि सम्बन्धी नियमहरू निर्धारण गर्नेछ ।

झ. निर्देशक समितिले आवश्यकता महसुस गरेका विभिन्न समितिहरूको निर्माण गर्न सक्नेछ । समितिले अन्य संघ संस्थाहरूसित सम्बन्ध र समन्वयका लागि आफनो प्रतिनिधिका रुपमा विभिन्न व्यक्तिहरूलाई नियुक्त गर्न सक्नेछ ।

ञ. निर्देशक समितिले एजेन्सीका विभिन्न मामिला एवं एजेन्सीले अनुमोदन गरेका आयोजना परियोजनाहरू सम्बन्धमा वार्षिक प्रतिवेदन तयार गरी महासम्मेलनमा प्रस्तुत गर्नेछ । समितिले एजेन्सीले संयुक्त राष्ट्रसंघ अथवा एजेन्सीसँग सम्बन्धित कार्य गरेका अन्य कुनै संघ-संस्थासमक्ष पेश गर्ने वा पेश गर्न आवश्यक पर्ने प्रतिवेदन तयार गरी महासम्मेलन समक्ष प्रस्तुत गर्नेछ । वार्षिक प्रतिवेदन समेत यस किसिमका सबै प्रतिवेदनहरू महासम्मेलनको नियमित वार्षिक सभा हुनुभन्दा कम्तीमा एक महिना पहिले एजेन्सीका सबै सदस्यहरूलाई उपलब्ध गराउनु पर्नेछ ।

## धारा ७

## जनशक्ति/कर्मचारी

क. एजेन्सीका कर्मचारीहरू (स्टाफ) को नेतृत्व महानिर्देशकले गर्नेछन् । निर्देशक समितिले महासम्मेलनको अनुमोदनमा चार वर्षका लागि महानिर्देशकको नियुक्ति गर्नेछ । महानिर्देशक एजेन्सीका प्रमुख प्रशासकीय अधिकृत हुनेछन् ।

ख. महानिर्देशक कर्मचारीहरूको नियुक्ति, संगठन र काम-कारवाहीका लागि उत्तरदायी रहनेछन् र निज निर्देशक समितिको मातहत एवं नियन्त्रणमा हुनेछन् । निजले समितिद्वारा अख्तियार गरिएका नियमहरू बमोजिम आफना काम कर्तव्य निर्वाह गर्नेछन् ।

ग. कर्मचारी नियुक्ति गर्दा एजेन्सीका उद्देश्य एवं काम कारवाही, परिपूर्ति गर्न आवश्यक हुन सक्ने दक्ष वैज्ञानिक एवं प्राविधिक तथा अन्य व्यक्ति समावेश हुनुपर्नेछ । एजेन्सी यसका स्थायी कर्मचारी न्यूनतम संख्यामा राख्ने सिद्दान्तबाट निर्देशित रहनेछ ।

घ. कर्मचारीहरूको भर्ना एवं रोजगारी तथा सेवा सुविधा निर्धारण सम्बन्धी प्रावधानहरू कर्मचारीहरूको उच्चतम कार्यक्षमता, प्राविधिक दक्षता तथा इमानदारिता सुनिश्चित गर्नका लागि हुनेछ । यी प्रावधानहरूका अतिरिक्त सदस्यहरूले एजेन्सीप्रति पुऱ्याएको योगदान तथा कर्मचारी नियुक्तिको महत्व यथासम्भव फराकिलो भौगोलिक आधारमा हुनेतर्फ विशेष ध्यान दिइनेछ ।

ङ. कर्मचारीहरूको नियुक्ति, पारिश्रमिक र बर्खास्तगी सम्बन्धी शर्तहरू यस विधानमा उल्लेखित प्रावधान बमोजिम निर्देशक समितिद्वारा निर्मित नियमावली तथा समितिको सिफारिशमा महासम्मेलनबाट अनुमोदित साधारण नियमहरू बमोजिम हुनेछ ।

च. आफनो कर्तव्य निर्वाह गर्ने क्रममा महानिर्देशक तथा अन्य कर्मचारीहरूले एजेन्सीभन्दा बाहिरको कुनै पनि श्रोतबाट कार्य निर्देशन लिने अथवा सोको अपेक्षा गर्ने छैनन् । निजहरू एजेन्सीको पदाधिकारीको हैसियतमा निजहरूको अवस्थितिमा प्रभाव पार्न सक्ने कुनै पनि क्रियाकलापबाट पृथक् रहनु पर्नेछ; एजेन्सीप्रतिको उत्तरदायित्वप्रति इमान्दार रही निजहरूले एजेन्सीका तोकिएका औपचारिक कार्य निर्वाह गर्ने क्रममा निजहरूको जानकारीमा आएका कुनै पनि औद्योगिक गोप्यता वा अन्य गोप्य सूचनाहरू सार्वजनिक गर्ने छैनन् । प्रत्येक सदस्यले महानिर्देशक र अन्य कर्मचारीहरूको उत्तरदायित्वको अन्तर्राष्ट्रिय छविलाई यथोचित सम्मान गर्नेछन् एवं निजहरूको कर्तव्य निर्वाह गर्ने क्रममा कुनै प्रभाव पार्ने प्रयास गर्ने छैनन् ।

छ. यस धारामा कर्मचारी भन्नाले सुरक्षाकर्मीहरू समेतलाई जनाउँदछ ।

## धारा ८

## सूचनाको आदानप्रदान

क. प्रत्येक सदस्यले एजेन्सीलाई सहयोग हुन सक्ने भनी निजको विवेकले ठहर गरेका सूचनाहरू उपलब्ध गराउनु पर्दछ ।

ख. प्रत्येक सदस्यले, धारा ११ बमोजिम एजेन्सीद्धारा उपलब्ध सहयोगको परिणामस्वरुप विकसित सबै वैज्ञानिक सूचनाहरू एजेन्सीलाई उपलब्ध गराउनुपर्दछ ।

ग. एजेन्सीले यसै धाराको अनुच्छेद क र ख बमोजिम यसलाई उपलब्ध गराइएका सूचनाहरूलाई संकलन गर्ने तथा पहुँचयोग्य स्वरूपमा उपलब्ध बनाउनेछ । एजेन्सीले आणविक उर्जाको प्रकृति एवं शान्तिपूर्ण प्रयोग सम्बन्धी सूचनाहरू यसका सदस्यहरूबीच आदान-प्रदान गर्नलाई प्रोत्साहन दिन सकारात्मक कदम चाल्नेछ तथा यस उद्देश्यको प्राप्तिका लागि यसका सदस्यहरूबीच मध्यस्थकर्ताको भूमिका निर्वाह गर्नेछ ।

## धारा ९

## पदार्थहरूको आपूर्ति

क. सदस्यहरूले निजहरूले उपयुक्त ठहर गरेको तथा एजेन्सीसित सहमति हुन सक्ने शर्तहरूको आधारमा विशेष परमाणु विच्छेदक (फिजनेबल) पदार्थहरूको निश्चित परिमाण

एजेन्सीलाई उपलब्ध गराउन सक्नेछन् । एजेन्सीलाई यसरी उपलब्ध गराइएको पदार्थहरू उपलब्ध गराउने सदस्यको स्वविवेक बमोजिम सम्बन्धित सदस्य आफैले अथवा एजेन्सीसितको सम्झौता बमोजिम एजेन्सीको भण्डार (डिपो) मा राख्न (स्टोर गर्न) सकिनेछ ।

ख. सदस्यहरूले धारा २० मा उल्लेख भएबमोजिम श्रोत पदार्थ तथा अन्य पदार्थहरू एजेन्सीलाई उपलब्ध गराउन सक्नेछन् । यसरी उपलब्ध गराइने पदार्थको एजेन्सीले स्वीकार गर्ने परिमाण धारा १३ मा उल्लेख भएको सम्झौता बमोजिम निर्देशक समितिले निर्धारण गर्नेछ ।

ग. प्रत्येक सदस्यले कानूनसंगत रूपमा आफूले तयार गरेको विशेष विच्छेदक पदार्थ (स्पेशल फिजनेबल म्याटेरियल्स), श्रोत पदार्थ तथा अन्य पदार्थहरूको परिमाण, स्वरुप एवं सरचना सम्बन्धमा तत्काल अथवा निर्देशक समितिले निर्दिष्ट गरेको विशेष समयावधिभित्र एजेन्सीलाई सूचना उपलब्ध गराउनेछ ।

घ. एजेन्सीको अनुरोधमा सम्बन्धित सदस्यले निजले उपलब्ध गराएको उल्लेखित पदार्थमध्ये एजेन्सीले तोकेको उल्लेखित पदार्थको उल्लेखित परिमाण बिना विलम्ब अर्को सदस्य अथवा सदस्यहरूको समूहलाई हस्तान्तरण गर्नेछ, तथा एजेन्सीका संयन्त्र (फेसिलिटिज) हरूमा गरिने परीक्षण (अपरेशन) एवं वैज्ञानिक अनुसन्धानका लागि अत्यन्त आवश्यक उल्लेखित पदार्थको उल्लेखित परिमाण बिना विलम्ब एजेन्सी स्वयंलाई हस्तान्तरण गर्नेछ ।

ङ. कुनै सदस्यले उपलब्ध गराएको पदार्थको परिमाण, स्वरुप तथा संरचना निर्देशक समितिको अनुमोदनमा उक्त सदस्यले कुनै पनि समय परिवर्तन गर्न सक्नेछ ।

च. यसै धाराको अनुच्छेद ग बमोजिमको प्रारम्भिक सूचना सम्बन्धित सदस्यको सन्दर्भमा यो विधान लागू भएको मितिले तीन महिनाभित्र जारी गर्नु पर्नेछ । निर्देशक समितिबाट अन्यथा निर्णय नआएमा, प्रारम्भिक स्तरमा उपलब्ध गराइएका पदार्थ सम्बन्धित सदस्यको सन्दर्भमा यो विधान लागू भएपछिको एक क्यालेण्डर वर्षसम्मका लागि हुनेछ । यसै गरी समितिबाट विपरीत प्रतिक्रिया नआएको अवस्थामा क्यालेण्डर (चालू?) वर्षसित सम्बन्धित रही जारी पूरक सूचनाहरू सूचना जारी भएको पहिलो क्यालेण्डर वर्षसम्म सम्बन्धित हुनेछन् र उल्लेखित सूचना प्रत्येक वर्षको नोभेम्बर महिनाको पहिलो दिनभन्दा ढिला गरिने छैन ।

छ. एजेन्सीले कुनै सदस्यलाई गरेको अनुरोधमा उक्त सदस्यले उपलब्ध गराउन तयार रहेको भनी एजेन्सीलाई सूचित गरेको परिमाणको पदार्थमध्ये एजेन्सीले हस्तान्तरण गर्न भनेको पदार्थको हस्तान्तरण गर्ने ठाउँ र तरिका तथा उपयुक्त अवस्थामा त्यसको स्वरुप र संरचना एजेन्सीले तोक्न सक्नेछ । एजेन्सीले हस्तान्तरण गरिएको पदार्थको परिमाण प्रमाणित गर्नेछ र सदस्यहरूलाई त्यस परिमाणको आवधिक रिपोर्ट गर्नेछ ।

ज. एजेन्सी आफनो मातहतमा रहेका पदार्थहरूको भण्डारण तथा सुरक्षाका लागि जवाफदेही रहनेछ । एजेन्सीले उल्लेखित पदार्थहरू देहायका अवस्थाहरू विरुद्ध सुरक्षित रहने कुराको सुनिश्चितता गर्नेछः

(१) मौसमबाट हुन सक्ने विनाश वा क्षति

(२) अनधिकृत विस्थापन वा परिवर्तन

(३) क्षति अथवा विनाश (विध्वंश समेत), तथा

(४) बलपूर्वक कब्जा । विशेष विच्छेदक पदार्थ आफनो मातहतमा भण्डारण गर्ने सम्बन्धमा एजेन्सीले उल्लेखित पदार्थहरूको भौगोलिक वितरण गर्दा उल्लेखित पदार्थ कुनै एउटै देशमा अथवा विश्वको कुनै एउटै क्षेत्रमा ठूलो परिमाणमा भण्डारण हुन नदिने सुनिश्चितता गर्नेछ ।

झ. एजेन्सीले आवश्यकता महसुस गरे बमोजिम व्यवहारिक रूपमा यथासम्भव छिटोभन्दा छिटो देहायका कुराहरु स्थापना गर्ने वा ग्रहण गर्नेछ :

१. उल्लेखित पदार्थहरूको बुझबुझारथ, भण्डारण वा वितरणका लागि प्लान्ट, उपकरण, तथा संयन्त्रहरू ;

२. भौतिक सुरक्षा संयन्त्रहरू;

३. पर्याप्त स्वास्थ्य एवं सुरक्षा मापदण्डहरू ;

४. प्राप्त गरिएका पदार्थहरूको विश्लेषण एवं प्रमाणीकरणका लागि नियन्त्रण प्रयोगशालाहरू;

५. उल्लेखित जिम्मेवारीमा खटिएको कुनै कर्मचारीलाई आवश्यक पर्ने आवास तथा प्रशासकीय सुविधाहरू ।

ञ. यस धारा बमोजिम उपलब्ध भएका पदार्थहरूको प्रयोग निर्देशक समितिले यस विधानका प्रावधानहरू अनुरूप निर्धारण गरेबमोजिम हुनेछ । कुनै पनि सदस्यलाई निजले एजेन्सीलाई उपलब्ध गराएको पदार्थ एजेन्सीले पृथक् राख्नुपर्ने अथवा उल्लेखित पदार्थ कुनै खास परियोजनामा लगाउनै पर्ने भनी माग वा आग्रह गर्ने अधिकार रहने छैन ।

## धारा १०

## सेवा, उपकरण र संयन्त्र

सदस्यहरूले एजेन्सीको उद्देश्य तथा कामकारवाहीको परिपूर्तिमा सहयोगी हुन सक्ने गरी एजेन्सीलाई सेवा, उपकरण तथा संयन्त्रहरू उपलब्ध गराउन सक्नेछन् ।

## धारा ११

## एजेन्सी परियोजनाहरू

क. एजेन्सीका कुनै पनि सदस्य वा सदस्यहरूको समूहले शान्तिपूर्ण उद्देश्यसहित आणविक उर्जाको अनुसन्धान, विकास अथवा व्यवहारिक प्रयोग सम्बन्धमा कुनै परियोजना स्थापना गर्न चाहेमा सो उद्देश्यका लागि आवश्यक हुने खास विच्छेदक र अन्य पदार्थ, सेवा, उपकरण र सुविधाहरूको सम्बन्धमा एजेन्सीको सहायताका लागि एजेन्सी समक्ष अनुरोध गर्नुपर्दछ । यस किसिमको कुनै पनि अनुरोध गर्दा सोको उद्देश्य एवं परियोजनाको विस्तारको सीमान्तता सम्बन्धी विवरण समावेश हुनुपर्नेछ, तथा निर्देशक समितिबाट सो उपर विचार वा छलफल गरिनेछ ।

ख. अनुरोध गरिएको अवस्थामा एजेन्सीले सो परियोजनाहरू सञ्चालन गर्न आफना कुनै सदस्य वा सदस्यहरूको समूहलाई बाह्य श्रोतबाट आवश्यक वित्तीय सहायता उपलब्ध गराउन सहयोग गर्न सक्नेछ । सो सहयोग उपलब्ध गराउने सन्दर्भमा एजेन्सी उल्लेखित परियोजनाका लागि कुनै किसिमको प्रत्याभूति दिने अथवा कुनै वित्तीय उत्तरदायित्व वहन गर्नुपर्ने अवस्थामा रहने छैन ।

ग. एजेन्सीले कुनै सदस्य वा सदस्यहरूको समूहले सञ्चालन गरेको परियोजनाका लागि आवश्यक कुनै पदार्थ, सेवा, उपकरण, र सुविधाहरूको आपूर्ति व्यवस्था मिलाउन सक्नेछ, अथवा उल्लेखित कुनै वा सबै आवश्यकताको आपूर्तिका लागि सदस्य वा सदस्यहरूको अनुरोध बमोजिम, स्वयंले प्रत्यक्ष जिम्मेवारी वहन गर्न सक्नेछ ।

घ. प्राप्त हुन आएको अनुरोधउपर विचार गर्ने उद्देश्यले एजेन्सीले त्यसरी अनुरोध गर्ने सदस्य वा सदस्यहरूको समूह रहेको क्षेत्रमा अनुरोध गरिएको परियोजना स्थापना गर्न योग्य रहे नरहेको ठहर गर्न सोसम्बन्धी जाँचबूझ गर्न सक्षम व्यक्तित्व वा व्यक्तिहरूको समूह पठाउन सक्नेछ । उल्लेखित उद्देश्य प्राप्तिका लागि एजेन्सीले सो अनुरोध गर्ने सदस्य वा सदस्यहरूको समूहको अनुमोदन लिएर, आफनै कर्मचारीमध्येको कुनै सदस्य वा कुनै सदस्य राष्ट्रको उपयुक्त योग्यता भएको कुनै व्यक्ति वा व्यक्तिहरूको समूहलाई खटाउन सक्नेछ ।

ङ. प्रस्तुत धारा बमोजिम कुनै परियोजनाका लागि स्वीकृति प्रदान गर्नुभन्दा पहिले निर्देशक समितिले देहायका कुराहरूमा विचार पुऱ्याउनेछ :

१. वैज्ञानिक एवं प्राविधिक सम्भाव्यता समेत परियोजनाको उपयोगिता;

२. परियोजनाको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्ने योजना, कोष, र प्राविधिक जनशक्तिको पर्याप्तता;

३. प्रयोग हुने पदार्थहरूको व्यवस्थापन एवं भण्डारण तथा संयन्त्रहरूको सञ्चालन सम्बन्धमा प्रस्तावित स्वास्थ्य तथा सुरक्षा मापदण्डहरूको पर्याप्तता;

४. अनुरोधकर्ता सदस्य वा सदस्यहरूको समूहको आवश्यक वित्तीय, पदार्थ, संयन्त्र सुविधा, उपकरण तथा सेवाहरू हासिल गर्ने सम्बन्धमा रहेको असमर्थता;

५. एजेन्सीलाई उपलब्ध पदार्थ एवं अन्य स्रोत साधनको समान वितरण;

६. विश्वका अल्प-विकसित क्षेत्रका विशेष आवश्यकताहरू ; तथा

७. सान्दर्भिक हुन सक्ने अन्य यस्ता सबै मामिलाहरू ।

च. परियोजनालाई अनुमोदन गरेको अवस्थामा एजेन्सी र सो परियोजना निम्ति अनुरोध दर्ता गर्ने सदस्य वा सदस्यहरूको समूहबीच एक सम्झौता हुनेछ, जुन सम्झौताले देहायका कार्य गर्नेछ :

१. परियोजनाका निम्ति छुट्याइएको कुनै आवश्यक विशेष विच्छेदक वा अन्य पदार्थहरु उपलब्ध गराउने;

२. विशेष विच्छेदक पदार्थहरूलाई तत्काल एजेन्सीको प्रत्यक्ष वा ती पदार्थ एजेन्सी परियोजनाका निमित्त उपलब्ध गराउन लागेको सदस्यको प्रत्यक्ष नियन्त्रण रहेको स्थानबाट सो परियोजना सञ्चालनको अनुमोदन पाएको सदस्य वा सदस्यहरूको समूह समक्ष, आवश्यक स्वास्थ्य एवं सुरक्षा मापदण्डहरू यथेष्ट रहे नरहेको तथा कुनै पनि जहाजी ओसारपसार गर्दा आवश्यक रहने सुरक्षाको सुनिश्चितता प्रदान गर्ने अवस्था दृष्टिगत गरी, सो पदार्थको ढुवानी व्यवस्था मिलाउने;

३. कुनै पनि पदार्थहरू, सेवाहरू, उपकरण र संयन्त्र सुविधाहरू एजेन्सी स्वयंले उपलब्ध गराउने सहमति भएमा त्यसको सेवा शुल्क समेत शर्तहरू तोक्ने, तथा, पछि सो पदार्थहरू, सेवाहरू, उपकरण एवं संयन्त्र सुविधाहरू कुनै सदस्यले उपलब्ध गराउँदै छ भने परियोजना सञ्चालनार्थ दर्ता गराउने सदस्य वा सदस्यहरूको समूह तथा आपूर्तिकर्ता सदस्यबीच समन्वय गरी सो सेवा शर्तहरू तोक्ने ;

४. परियोजना सञ्चालन गर्न दर्ता गराउने सदस्य वा सदस्यहरूको समूहले लिनुपर्ने देहायका दायित्वहरू समेत :

(क) परियोजनाको रूपमा उपलब्ध गराइएको सहयोग कुनै सैनिक उद्देश्य अभिवृद्धिका लागि प्रयोग हुन नहुने ; र

(ख) उल्लेखित परियोजना धारा १२ मा व्यवस्था भएबमोजिम सुरक्षा व्यवस्था मातहत रहने छ, अन्य सान्दर्भिक सुरक्षा प्रक्रियाबारे सम्झौतामा सुस्पष्ट उल्लेख रहनेछ ।

५. परियोजना सञ्चालनको क्रममा विकसित हुन सक्ने कुनै आविष्कार वा अनुसन्धान अथवा सो सम्बन्धी कुनै प्याटेण्ट अधिकार सम्बन्धमा एजेन्सी र

एजेन्सीका सम्बद्ध सदस्य वा सदस्यहरूको अधिकार एवं हितहरू सम्बन्धमा यथोचित प्रावधान व्यवस्थापन गर्ने ;

६. विवादहरूको समाधान निम्ति यथोचित प्रावधानहरूको व्यवस्थापन गर्ने ; र

७. उपयुक्त हुन सक्ने यस्ता अन्य जुनकुनै प्रावधानहरू समावेश गर्ने ।

छ. यस धारामा उल्लेख भएका प्रावधानहरू कुनै पनि विद्यमान परियोजनाका लागि हुने पदार्थ, सेवा, संयन्त्र सुविधा वा उपकरण सम्बन्धी अनुरोधको हकमा अवस्था अनुसार उपयुक्त भएमा लागू हुनेछन् ।

## धारा १२

## एजेन्सीको सुरक्षा संयन्त्र

क. कुनै एजेन्सीसम्बद्ध परियोजना, वा अन्य व्यवस्थापन सम्बन्धबारे सम्बद्ध पक्षले एजेन्सीसँग सुरक्षा संयन्त्र प्रयोगको आग्रह गरेमा, सो परियोजना वा अन्य व्यवस्थापनसँग अनुकूल हुने हदसम्म एजेन्सीलाई देहायको अधिकार एवं उत्तरदायित्व हुनेछ :

(१) आणविक भट्टीसमेत विशिष्टिकृत उपकरण एवं संयन्त्र सुविधाहरूको बनोट निरीक्षण गर्ने तथा सो कुराहरू कुनै सैनिक उद्देश्य अभिवृद्धिका लागि प्रयोग नहुने, यथोचित स्वास्थ्य एवं सुरक्षा मापदण्डहरू परिपालन गरिएको हुनुपर्ने, तथा यसै धारा बमोजिम व्यवस्था गरिएका सुरक्षा संयन्त्रलाई प्रभावकारी कार्यान्वयन निम्ति अनुमति प्रदान गरिएको हुनुपर्ने अवस्थालाई दृष्टिगत गरी अनुमोदन गर्ने;

(२) एजेन्सीले निर्धारण गरेका कुनै स्वास्थ्य एवं सुरक्षा सम्बन्धी मापदण्डहरूको पर्यवेक्षणको आवश्यकता तोक्ने;

(३) परियोजना वा सोको व्यवस्थापनमा प्रयुक्त वा उत्पादित श्रोत तथा विशेष विच्छेदक पदार्थहरू सम्बन्धी उत्तरदायित्वको सुनिश्चिततालाई सहयोग गर्न सञ्चालन रेकर्डहरूको व्यवस्थापन एवं निर्माणको आवश्यकता बोध गराउने;

(४) प्रगति विवरण माग तथा स्वीकार गर्ने;

(५) विकीकरणजन्य पदार्थहरूको रासायनिक प्रशोधनमा प्रयोग गरिने साधनहरू ती पदार्थको रासायनिक प्रशोधन प्रक्रिया कुनै सैनिक उद्देश्य अभिवृद्धिका लागि प्रतिस्थापन हुन नहुने तथा सो प्रक्रिया यथोचित स्वास्थ्य एवं सुरक्षा मापदण्ड अनुकूल भए नभएको सुनिश्चितता हासिल गर्दै अनुमोदन गर्ने; विशेष विच्छेदक पदार्थ प्राप्त भएमा वा सह-उत्पादनको रुपमा उत्पादित भएमा सम्बद्ध सदस्य वा सदस्यहरूको समूहले निर्धारण गरेको अनुसन्धानमा वा विद्यमान वा निर्माणाधीन आणविक भट्टीमा निरन्तर एजेन्सीको सुरक्षा निगरानी मातहत शान्तिपूर्ण उद्देश्यका लागि सोको प्रयोग हुनुपर्ने आवश्यकता बोध गराउने; तथा उल्लेखित पदार्थहरूको अनावश्यक भण्डारण हुन दिनबाट रोक्न माथि उल्लेखित प्रयोगका लागि आवश्यक प्राप्त वा सह- उत्पादनको रुपमा उत्पादित कुनै विशेष विच्छेदक पदार्थ एजेन्सीको नियन्त्रणमा रहने गरी एजेन्सी समक्ष भण्डारण (डिपोजिट) गर्नुपर्ने आवश्यकता बोध गराउने, तत्पश्चात् सम्बद्ध सदस्य वा सदस्यहरूको समूहको आग्रह बमोजिम एजेन्सीको नियन्त्रणमा भण्डारण गरिएको सो विशेष विच्छेदक पदार्थ माथि उल्लेखित प्रावधान मातहत प्रयोग गर्नका लागि सम्बद्ध सदस्य वा सदस्यहरूको समूहलाई यथाशीघ्र फिर्ता गरिदिने ।

(६) उल्लेखित सहयोग पाउने राज्य वा राज्यहरूको क्षेत्राधिकारभित्र सम्बद्ध राज्य वा राज्यहरूसितको परामर्शपछि एजेन्सीले कुनै पनि स्थान एवं तथ्य तथ्यांकहरूसम्म तथा विशेष विच्छेदक पदार्थको श्रोत, आपूर्ति एवं उत्पादनका लागि आवश्यक रहेको तथा यस विधान बमोजिम सुरक्षा गरिनुपर्ने भनी औंल्याइएका पदार्थ, उपकरण वा संयन्त्र सुविधाहरू सम्बन्धमा कुनै पनि कामले सरोकार राख्ने कुनै पनि व्यक्ति समक्ष पुग्ने, तथा धारा ११ को उप-अनुच्छेद च.४ मा उल्लेख भएबमोजिम कुनै सैनिक उद्देश्यको अभिवृद्धिको लागि उल्लेखित पदार्थ एवं सहयोग प्रदान नगर्ने नीति परिपालन भइरहेको, साथै यस धाराको उप-अनुच्छेद क २ मा उल्लेख भएबमोजिम स्वास्थ्य तथा सुरक्षाका मापदण्डहरू, तथा एजेन्सी र सम्बद्ध राज्य वा राज्यहरूबीच भएको सम्झौतामा उल्लेखित अन्य कुनै पनि प्रावधान बमोजिम कार्य भइरहेको छ छैन निर्धारण गर्ने । एजेन्सीबाट तोकिएका निरीक्षकहरूले राज्यको अवरोध भएमा सम्बद्ध राज्यबाट अधिकारप्राप्त प्रतिनिधि साथ लिएर मात्र तोकिएको कार्य गर्नेछन्, त्यसकारण निरीक्षकहरूले निरीक्षणको कार्यमा विलम्ब गर्ने वा अन्य कारणबाट निजहरूको काममा कुनै बाधा अड्चन खडा गर्ने कार्य गर्न हुनेछैन ।

(७) ग्रहणकर्ता राज्य वा राज्यहरूका नीति नियम र निर्देशनहरूको परिपालना नगरी रहेको अवस्थामा सो सच्याउन दिइएको उपयुक्त समयावधिमा समेत सच्याउन नसकेमा सो राज्य वा राज्यहरूलाई दिइआएको सहयोग निलम्बन वा खारेज गर्ने, तथा एजेन्सी वा कुनै सदस्यबाट सो परियोजना सञ्चालन गर्न उपलब्ध गराइएका कुनै पनि पदार्थ तथा उपकरणहरू फिर्ता लिने ।

ख. एजेन्सीले आवश्यकता अनुसार, निरीक्षकहरूको एक समूह स्थापना गर्नेछ । निरीक्षकहरूको समूहले एजेन्सी स्वयंले सञ्चालन गरिरहेका सम्पूर्ण कार्यक्रमहरू निरीक्षण गर्ने, तथा एजेन्सी स्वयंले अनुमोदन, सुपरिवेक्षण वा नियन्त्रण गर्ने परियोजनाहरूमा लागू हुने प्रावधान बमोजिम स्वास्थ्य एवं सुरक्षा मापदण्डहरू एजेन्सीले परिपालना गरे नगरेको, तथा एजेन्सीले सो को नियन्त्रणमा रहेको वा आफनै परियोजनाहरूमा प्रयुक्त वा उत्पादित श्रोत एवं विशेष विच्छेदक पदार्थ कुनै सैनिक अभिष्ट अभिवृद्धि गर्न प्रयोग हुन नदिने तर्फ पर्याप्त आधारहरूको परिपालना गरे नगरेको निर्धारण गर्ने उत्तरदायित्व निर्वाह गर्नुपर्नेछ । कुनै नीति नियम परिपालना नभएको वा पर्याप्त आधारहरू खडा नगरेको अवस्था रहेको भेटिएमा सो सच्याउन एजेन्सीले तत्काल उपचारक कारवाही गर्नेछ ।

ग. निरीक्षकहरूको समूहमाथि यस धाराको उप-अनुच्छेद क. ६ मा उल्लेख भएबमोजिमको कार्यभार ग्रहण तथा सत्य स्थापित गर्ने, तथा धारा ११ को उप-अनुच्छेद च ४ मा उल्लेख भए बमोजिम उत्तरदायित्वहरूको परिपालना भए नभएको, तथा यस धाराको अनुच्छेद क. २ मा उल्लेख भएबमोजिम पर्याप्त मापदण्ड, तथा एजेन्सी र सम्बद्ध राज्य वा राज्यहरूबीच भएका सम्झौतामा उल्लेखित परियोजनासम्बन्धी अन्य सबै शर्त एवं अवस्थाहरूको परिपालना भए नभएको निर्धारण गर्ने उत्तरदायित्व रहनेछ । निरीक्षकहरूको समूहले उल्लेखित कुनै पनि कुरा परिपालना नभएको भेटेमा सो सम्बन्धी विवरण महानिर्देशक समक्ष तथा निजले निर्देशक समिति समक्ष प्रस्तुत गर्नेछन् । समितिले ग्रहणकर्ता राज्य वा राज्यहरूलाई परिपालना नभएको भेटिएको नीति नियम तत्काल परिपालना गर्न आव्हान गर्नेछ । परिपालना नभएको नगरिएको तथ्य सम्बन्धमा निर्देशक समितिले आफना सबै सदस्य तथा सुरक्षा परिषद् एवं संयुक्त राष्ट्रसंघीय महासभा समक्ष विवरण पठाउनेछ । ग्रहणकर्ता राज्य वा राज्यहरू, दिइएको उपयुक्त समयावधिभित्र सो परिपालना नगरिएको प्रसंगको सम्पूर्ण उपचारक कारवाही गर्न असफल रहेमा समितिले देहायको कुनै एक वा दुवै मापदण्ड अपनाउन सक्नेछः एजेन्सी वा कुनै सदस्यद्वारा उपलब्ध गराइँदै रहेको सहयोग तत्काल रोक्का वा निलम्बन गर्ने, तथा ग्रहणकर्ता राज्य

वा राज्यहरूलाई उपलब्ध गराइएको पदार्थ सामग्री एवं उपकरण फिर्ता माग गर्ने । एजेन्सीले धारा १४ बमोजिम, नीति नियम एवं निर्देशनहरूको तामेली नगर्ने सदस्यलाई सदस्यता वापत प्राप्त हुने विशेष सुविधा एवं अधिकार प्रयोग गर्नबाट वञ्चित गर्न समेत सक्नेछ ।

## धारा १३

## सदस्यहरूलाई सोधभर्ना

निर्देशक समिति तथा एजेन्सीलाई पदार्थ सामग्री, सेवा, उपकरण, वा संयन्त्र सुविधा उपलब्ध गराउने सदस्यबीच सहमति भएकोमा बाहेक समितिले त्यस्तो सदस्यसँग उल्लेखित सामग्रीहरुको सोधभर्ना गर्ने सम्बन्धमा सम्झौता गर्नेछ ।

## धारा १४

## वित्त

क. निर्देशक समितिले एजेन्सीको वार्षिक अनुमानित आयव्यय विवरण महासम्मेलन समक्ष प्रस्तुत गर्नेछ । यस सम्बन्धमा समितिको कामलाई सहजता प्रदान गर्न महानिर्देशक स्वयंले अनुमानित आय व्यय विवरण तयार गर्नेछन् । महासम्मेलनले सो अनुमानित आयव्यय विवरणलाई अनुमोदन नगरेमा आवश्यक सिफारिश सहित समितिमा फिर्ता पठाइनेछ । समितिले संशोधित अनुमानित आयव्यय विवरण अनुमोदनका लागि महासम्मेलन समक्ष प्रस्तुत गर्नेछ ।

ख. एजेन्सीको खर्च विवरणलाई देहायका शीर्षकमा वर्गीकृत गरिनेछ :

(१) प्रशासनिक खर्चः यसमा देहायका खर्च समावेश रहने छन्:

(क) तल उल्लेखित उप-अनुच्छेद ख २ मा व्यवस्था भएको सामग्री, सेवा, उपकरण, तथा संयन्त्र सुविधासित सम्बन्धित कर्मचारी बाहेक एजेन्सीका कर्मचारीहरूको खर्च लागत; तथा एजेन्सी परियोजनाहरूको तयारी एवं सूचना वितरणका लागि आवश्यक हुने खर्च;

(ख) एजेन्सी परियोजनाहरूको सन्दर्भमा धारा १२ मा उल्लेख भएबमोजिम सुरक्षा मापदण्डहरूको कार्यान्वयनमा लाग्ने लागत खर्च वा, कुनै द्विपक्षीय वा बहुपक्षीय व्यवस्थापनको सन्दर्भमा धारा ३ को उप-अनुच्छेद क ५ मातहत, एजेन्सीद्वारा हुने विशेष विच्छेदक पदार्थको सञ्चालन एवं भण्डारणका लागि, तल उल्लेखित अनुच्छेद ङ मा व्यवस्था गरिएको भण्डारण तथा सञ्चालन खर्च बाहेक लाग्ने लागत खर्च;

(२) यस अनुच्छेदको उप-अनुच्छेदमा समावेश गरिएकोमा बाहेक कार्यक्रमहरू सञ्चालन गर्न स्थापित वा हासिल गरेका कुनै सामग्री, संयन्त्र सुविधा, प्लान्ट, तथा उपकरण सम्बन्धी खर्चहरू, तथा एक वा एकभन्दा धेरै सदस्यहरूसित भएको सम्झौता मातहत उपलब्ध भएका सामग्री, सेवा उपकरण एवं संयन्त्र सुविधा निम्तिको लागत खर्च ।

ग. माथि उल्लेखित उप-अनुच्छेद ख. १ (ख) अन्तर्गत हुने खर्च निर्धारण गर्न निर्देशक समितिले एजेन्सी तथा पक्षहरूबीच द्विपक्षीय वा बहुपक्षीय व्यवस्थापन हुने सहमतिमा भएका सुरक्षा मापदण्डहरूको कार्यान्वयन सम्बन्धी सम्झौता अन्तर्गत क्षतिपूर्ति हुन सक्ने परिमाण घटाउनेछ ।

घ. निर्देशक समितिले माथि उल्लेखित उप-अनुच्छेद ख.१ मा उल्लेख भएबमोजिम, महासम्मेलनबाट निर्धारण भएको परिमाण बमोजिम सदस्यहरूबीच खर्चको विनियोजन गर्नेछ । यसरी परिमाण निर्धारण गर्दा महासम्मेलन संयुक्त राष्ट्रसंघको नियमित आयव्ययका निमित्त सदस्य राष्ट्रहरूबाट हुनुपर्ने योगदान सम्बन्धमा संयुक्त राष्ट्रसंघले अपनाएको सिद्धान्तबाट निर्देशित रहनेछ ।

ङ. निर्देशक समितिले एजेन्सीबाट सदस्यहरूलाई प्रदान भएका सामग्री, सेवा, उपकरण, तथा संयन्त्र सुविधाहरूका निमित्त उपयुक्त पोशाकको भण्डारण एवं सञ्चालन शुल्क समेत सबै शुल्कहरूको आवधिक परिमाण स्थापना गर्नेछ । सो परिमाण माथि उल्लेखित उप-अनुच्छेद ख २ मा उल्लेख भएबमोजिमको खर्च एवं लागत सन्दर्भमा पर्याप्त हुने गरी एजेन्सीका लागि आय निःसृत हुने किसिमबाट संरचित हुनेछ, तर यसमा अनुच्छेद ६ च को प्रावधान बमोजिम प्राप्त हुन आउने स्वयंसेवी योगदानलाई उल्लेखित उद्देश्यका लागि निर्देशक समितिले प्रयोग गर्न सक्ने कुरा भने समावेश रहने छैन । यसरी प्राप्त शुल्क रकम एक पृथक कोषमा राखिनेछ जसलाई सदस्यहरूले उपलब्ध गराएको कुनै सामग्री, सेवा, उपकरण वा संयन्त्र सुविधाहरू बापत सदस्यहरूलाई चुक्ता गर्न तथा माथि उल्लेखित उप-अनुच्छेद ख २ को प्रावधान बमोजिम एजेन्सी स्वयंबाट लगाइएको हुन सक्ने समेत अन्य खर्चहरू पूरा गर्न प्रयोग हुन सक्नेछ ।

च. अनुच्छेद ङ मा उल्लेख भएबमोजिम खर्च एवं लागतको तुलनामा आय अतिरिक्त हुन आएमा, तथा एजेन्सीलाई प्राप्त स्वेच्छिक योगदान रकम एक साधारण कोषमा राखिनेछ

जसलाई महासम्मेलनको अनुमोदनमा निर्देशक समितिले निर्धारण गरेबमोजिम प्रयोग गर्न सकिनेछ ।

छ. महासम्मेलनले अनुमोदन गरेको नियम एवं सीमाको परिधिभित्र रही निर्देशक समितिलाई एजेन्सीको नाममा ऋण लिने अधिकार हुनेछ । तर यो अधिकार अन्तर्गत लिएको ऋण सापटीको सन्दर्भमा एजेन्सीका सदस्यहरू उपर कुनै दायित्व नपर्ने गरी प्रयोग गर्नु पर्नेछ, तथा एजेन्सीलाई प्राप्त हुन आउने कुनै स्वेच्छिक योगदान स्वीकार गर्ने आधिकारिता पनि समितिलाई हुनेछ ।

ज. वित्तीय मामिलाहरूबारे महासम्मेलनमा तथा एजेन्सीको आयव्ययको परिमाणबारे निर्देशक समितिमा उपस्थित भई मतदान गर्नेहरूको दुई तिहाई बहुमत आवश्यक हुनेछ ।

## धारा १५

## सहुलियत तथा निर्विघ्नताको अधिकार

क. एजेन्सीले आफना प्रत्येक सदस्यको क्षेत्रभित्र आफना काम कारवाहीहरू सञ्चालन गर्न आवश्यक कानूनी अधिकार, विशेष सहुलियत तथा निर्विघ्नताको अधिकार प्रयोग गर्न पाउनेछ ।

ख. सदस्यहरूका प्रतिनिधिहरू वा वैकल्पिक प्रतिनिधिहरू र परामर्शदाताहरू, समितिद्वारा मुकरर भएका संचालक तथा निजका वैकल्पिक एवं सल्लाहकारहरू, तथा महानिर्देशक एवं एजेन्सीका कर्मचारीहरूले एजेन्सीको कामकारवाहीको सन्दर्भमा निजहरूलाई सुम्पिएको कार्यको स्वतन्त्र सम्पादन गर्दा आवश्यक हुने उल्लेखित विशेषाधिकार एवं निर्विघ्नताको अधिकारको प्रयोग गर्न सक्ने छन् ।

ग. यस धारामा उल्लेख भएका कानूनी अधिकार, विशेष सहुलियत तथा निर्विघ्नता सम्बन्धमा निर्देशक समितिको निर्देशनमा कार्यरत रहने महानिर्देशकको प्रतिनिधित्वमा एजेन्सी र सदस्यहरूबीच हुने छुट्टै सम्झौता वा सम्झौताहरूमा परिभाषित गरिनेछ ।

## धारा १६

## अन्य संघ-संस्थाहरुसितको सम्बन्ध

क. महासम्मेलनको अनुमोदनमा निर्देशक समितिलाई एजेन्सी र संयुक्त राष्टसंघ तथा एजेन्सीको कार्य प्रकृतिसित सम्बन्धित अन्य संघ-संस्थाहरूसंग उपयुक्त सम्बन्ध स्थापना गर्न कुनै सम्झौता वा सम्झौताहरू गर्ने अधिकार प्राप्त छ ।

ख. एजेन्सी तथा संयुक्त राष्ट्रसंघबीच सम्बन्ध कायम गर्ने सम्झौता वा सम्झौताहरूले देहाय बमोजिम गर्नेछन् :

(१) धारा ३ उप-अनुच्छेद ख ४ तथा ख ५ मा व्यवस्था भएबमोजिम एजेन्सीले प्रतिवेदनहरू बुझाउने;

(२) महासभा वा अन्य कुनै संयुक्त राष्ट्रसंघीय परिषद्द्वारा एजेन्सीको सम्बन्धमा अंगिकार गरिएका प्रस्तावहरू उपर छलफल गर्ने, तथा आग्रह भएबमोजिम सो सम्बन्धमा एजेन्सी वा यसका सदस्यहरूद्धारा यस विधान बमोजिम भए गरेका काम कारवाहीबारे उपयुक्त संयुक्त राष्ट्रसंघीय निकायहरूमा प्रतिवेदन पेश गर्ने ।

## धारा १७

## विवादहरूको समाधान

क. यस विधानको कार्यान्वयन वा व्याख्या सम्बन्धमा कुनै सवाल वा विवाद उठी संवादबाट सो विवाद समाधान नभएमा, तथा सम्बद्ध पक्षहरू अन्य कुनै किसिमको समाधान निम्ति सहमत नभएमा सो को समाधान निम्ति अन्तर्राष्ट्रिय न्यायालयको विधानसँग सामञ्जस्य हुने गरी सोही अन्तर्राष्ट्रिय न्यायालयमा पठाइनेछ ।

ख. एजेन्सीका गतिविधिहरूको क्षेत्राधिकारभित्र उठ्न सक्ने वा उठेका कुनै पनि वैधानिक सवालहरूबारे सल्लाहकारी रायका निमित्त अन्तर्राष्ट्रिय न्यायालयमा अनुरोध गर्नका लागि संयुक्त राष्ट्रसंघ महासभाबाट अधिकार प्राप्त गर्ने गरी महासम्मेलन र निर्देशक समिति छुट्टाछुट्टै रूपमा अधिकारसम्पन्न छन् ।

## धारा १८

## संशोधन र प्रत्याहरण

क. यस विधानमा संशोधनका लागि कुनै पनि सदस्यले प्रस्ताव गर्न सक्नेछ । प्रस्तावित संशोधन प्रस्तावका प्रमाणित प्रतिहरू महानिर्देशकले तयार पार्नेछन् र महासम्मेलनमा छलफलका लागि प्रस्तुत गर्नुभन्दा कम्तीमा नब्बे दिन अगावै सम्पूर्ण सदस्यहरूलाई सो प्रतिहरू पठाउनेछन् ।

ख. यो विधान लागू भइसकेपछि महासम्मेलनको पाँचौ वार्षिक सत्रमा यस विधानका प्रावधानहरूको पुनरावलोकन सम्बन्धी प्रस्ताव सो सत्रमा पेश गरिने छ । उपस्थित भई मतदान गर्ने सदस्यहरूको बहुमतले अनुमोदन गरेपछि सो पुनरावलोकन प्रस्ताव त्यसपछिको अर्को महासम्मेलनमा प्रस्तुत हुनेछ । त्यस उप्रान्त, यस विधानको पुनरावलोकन गर्ने सवाल सम्बन्धी प्रस्तावहरू महासम्मेलनबाट निर्णय हुने गरी उल्लेखित समान प्रक्रियाद्वारा महासम्मेलनमा प्रस्तुत गर्नुपर्नेछ ।

ग. संशोधनहरू सम्पूर्ण सदस्यहरूका निम्ति लागू हुनेछन् जब :

(१) निर्देशक समितिबाट छलफल निम्ति प्रस्तुत प्रत्येक प्रस्तावित संशोधन प्रस्ताव उपर विचार विमर्श भई महासम्मेलनमा उपस्थित भई मतदान गर्नेमध्ये दुई तिहाइ बहुमतबाट अनुमोदन भएमा, तथा

(२) सम्पूर्ण सदस्य संख्याको दुई तिहाइ सदस्यद्वारा निजहरूको संवैधानिक प्रक्रिया बमोजिम स्वीकृति भएमा । सदस्यले गर्ने स्वीकृति धारा २१ को अनुच्छेद ग मा उल्लेख भएबमोजिमको भण्डारण गर्ने सरकार (डिपोजिटरी गभर्नमेण्ट) समक्ष स्वीकृतिको सूचना दाखिला भएदेखि लागू हुनेछ ।

घ. धारा २१ अनुच्छेद ङ मा उल्लेख भएबमोजिम यो विधान लागू भएको पाँच वर्षपछि कुनै पनि समयमा वा कुनै सदस्य यस विधानमा भएका संशोधन स्वीकृत गर्न अनिच्छुक रहेमा, निजले धारा २१ अनुच्छेद ग मा उल्लेख भएबमोजिम भण्डारण गर्ने सरकारलाई सूचना दिई आफूले एजेन्सीको सदस्यता फिर्ता गर्न सक्नेछ, जुन तत्काल निर्देशक समिति एवं सम्पूर्ण सदस्यहरूलाई सूचित गरिनेछ ।

ङ. कुनै सदस्यले एजेन्सीको सदस्यता परित्याग गरेको कारणबाट धारा ११ बमोजिम निजको करारीय उत्तरदायित्वहरू वा निजले सदस्यता परित्याग गरेको वर्षका लागि पूर्व सहमति गरिसकेको आर्थिक दायित्वहरू भने प्रभावित हुने छैनन् ।

## धारा १९

## विशेष सहुलियतको निलम्बन

क. एजेन्सीको कुनै सदस्यसित निजले एजेन्सीलाई भुक्तानी गर्नुपर्ने वित्तिय योगदान बक्यौता रहेको अवस्थामा सो बक्यौता परिमाण उक्त सदस्यले विगत दुई वर्षदेखि भुक्तानी गर्नु पर्ने वित्तीय योगदानको परिमाणसंग समान वा सोभन्दा बढी हुन आएमा निज सदस्यलाई एजेन्सीमा मताधिकार प्राप्त हुने छैन । तापनि महासम्मेलनले सो बक्यौता रकम भुक्तानी गर्ने असमर्थता उक्त सदस्यको कारणभन्दा बाहिरको परिस्थितिले गर्दा हो भनी सन्तुष्ट भएमा निज सदस्यलाई मतदानको अधिकार प्रदान गर्न सक्नेछ ।

ख. यस विधानमा उल्लेखित प्रावधानहरू वा यस विधान बमोजिम भए गरेका कुनै सम्झौताको लगातार उल्लंघन गर्ने सदस्यलाई निर्देशक समितिको सिफारिशमा महासम्मेलनमा उपस्थित भई मतदान गर्ने सदस्यहरूको दुई तिहाई बहुमतले सदस्यताबापत प्राप्त विशेष सहूलियत एवं अधिकारहरूको उपभोग गर्नबाट निलम्बन गर्न सक्नेछ ।

## धारा २०

## परिभाषा

यस विधानमा प्रयोग भएकोमा :

(१) "विशेष विच्छेदक पदार्थ/सामग्री" भन्ने शब्दावलीले प्लुटोनियम- २३९; यूरेनियम- २३३; आइसोटोप्स २३५ वा २३३ मा परिष्कृत यूरेनियम; एक वा एकभन्दा बढी माथि उल्लेखित पदार्थहरू समावेश भएको कुनै पदार्थ; तथा निर्देशक समितिले समय समयमा निर्धारण गर्ने यस्ता अन्य विच्छेदक सामग्री; तर यसमा "विशेष विच्छेदक पदार्थ" भन्नाले श्रोत सामग्री भने समावेश हुने छैन ।

(२) "आइसोटोप्स २३५ वा २३३ मा परिष्कृत यूरेनियम" भन्नाले आइसोटोप्स २३५ वा २३३ वा दुवै समेटिएको यूरेनियम हो जसको परिमाण दुवै आइसोप्स मिसिएर हुने प्रचुर परिमाणको आइसोटोप्स २३८ सँगको अनुपात, आइसोटोप्स २३५ को प्रकृतिमा उपलब्ध आइसोटोप्स २३५ सँगको अनुपातभन्दा बढी हुन्छ ।

(३) "श्रोत सामग्री" भन्नाले प्रकृतिमा रहने आइसोटोप्सको मिश्रण समेटिएको यूरेनियम, आइसोटप्स २३५ मा खिइएको यूरेनियम; थोरियम; उल्लेखित पदार्थहरूको कुनै पनि स्वरूपको धातु (मेटल), मिश्र धातु (एलय), रासायनिक मिश्रण, वा एकेन्द्रीत धातु समेत, निर्देशक समितिले समय समयमा निर्धारण गर्ने घनत्वको एक वा एकभन्दा बढी उल्लेखित पदार्थ समावेश गरिएको अन्य कुनै पदार्थ तथा निर्देशक समितिले समय समयमा निर्धारण गर्ने अन्य यस्तै पदार्थ वा सामग्रीहरू ।

## धारा २१

## हस्ताक्षर, अनुमोदन, तथा लागू हुने

क. यो विधान संयुक्त राष्ट्रसंघ वा अन्य कुनै विशिष्टिकृत संस्थाका सबै सदस्य राष्ट्रहरूबाट हस्ताक्षर गर्नका निमित्त निमित्त २६ अक्टुबर १९५६ मा खुला गरिनेछ एवं ती राष्ट्रहरूले हस्ताक्षर गर्नका निमित्त नब्बे दिनको अवधिसम्म खुला राखिनेछ ।

ख. हस्ताक्षर गर्ने राष्ट्रहरू अनुमोदनको औपचारिक लिखत प्रस्तुत गरेपछि यस विधानको पक्ष हुनेछन् ।

ग. हस्ताक्षर गर्ने राष्ट्रहरूको अनुमोदनको औपचारिक लिखत तथा यस विधानको धारा ४ अनुच्छेद ख बमोजिम सदस्यता अनुमोदित भएका राष्ट्रहरूले स्वीकृति गरेको औपचारिक लिखतहरू संयुक्त राज्य अमेरिकाको सरकार, जसलाई उप्रान्त भण्डारक सरकार (डिपोजिटरी गभर्नमेण्ट) भनिएको छ, समक्ष दाखिला गरी राखिनेछ ।

घ. यस विधानको अनुमोदन वा स्वीकृति राष्ट्रहरूको आ-आफनो संवैधानिक प्रक्रिया बमोजिम प्रभावित हुनेछ ।

ङ. यो विधान, परिशिष्ट बाहेक, यस धाराको अनुच्छेद ख बमोजिम अठार राष्ट्रहरूले अनुमोदनको औपचारिक लिखत प्रस्तुत गरेपछि लागू हुनेछ, यस शर्तमा उल्लेखित अठार राष्ट्रमध्ये देहायका राष्ट्रहरूमध्येका कम्तीमा तीनवटा राष्ट्र समावेश रहेको हुनुपर्नेछ : क्यानाडा, फ्रान्स, सोभियत समाजवादी गणतान्त्रिक संघ, संयुक्त अधिराज्य ब्रिटेन र उत्तरी आयरल्याण्ड, तथा संयुक्त राज्य अमेरिका । त्यसपछि दाखिला गरिएका अनुमोदनको औपचारिक लिखत तथा स्वीकृतिका औपचारिक लिखतहरू सो प्राप्त भएको मितिदेखि लागू हुनेछन् ।

च. भण्डारक सरकारले अनुमोदनको प्रत्येक लिखित दस्तावेज प्राप्त भएको मिति तथा विधान लागू हुने मिति यो विधानका सम्पूर्ण हस्ताक्षरकर्ता राष्ट्रहरूलाई तत्काल सूचित गर्नेछ । भण्डारक सरकारले कुन राष्ट्रहरू क्रमशः एजेन्सीका पक्षको रुपमा सम्मिलित भएको हो सो को मिति समेतको सूचना सम्पूर्ण हस्ताक्षरकर्ता एवं सदस्यहरूलाई तत्काल उपलब्ध गराउनेछ ।

छ. यस विधानको परिशिष्ट यो विधान हस्ताक्षरका निमित्त खुला गरिएको पहिलो दिनदेखि लागू हुनेछ ।

## धारा २२

## संयुक्त राष्ट्रसंघमा दर्ता

क. भण्डारक सरकारले संयुक्त राष्ट्रसंघको बडापत्रको धारा १०२ बमोजिम यो विधान दर्ता गराउनेछ ।

ख. एजेन्सी तथा कुनै सदस्य वा सदस्यहरूबीच भएका सम्झौताहरू, एजेन्सी तथा कुनै अन्य संगठन वा संगठनहरूबीच भएका सम्झौताहरू, तथा एजेन्सीको अनुमोदन आवश्यक रहने गरी सदस्यहरूबीच भएका सम्झौताहरू एजेन्सीमा दर्ता हुनेछन् । उल्लेखित सम्झौताहरू संयुक्त राष्ट्रसंघीय बडापत्रको धारा १०२ बमोजिम दर्ता हुनुपर्ने आवश्यक देखिएमा एजेन्सीले सोको दर्ता संयुक्त राष्ट्रसंघमा गर्नेछ ।

## धारा २३

## आधिकारिक पाठ तथा प्रमाणित प्रतिहरु

यो विधान चिनियाँ, अंग्रेजी, फ्रेन्च, रुसी एवं स्पेनिश भाषामा तयार पारिएको छ जुन समान रुपले आधिकारिक हुन्, तथा भण्डारक सरकारको अभिलेखालयमा राखिने छन् । यस विधानका यथोचित प्रमाणित प्रतिहरू भण्डारक सरकारले अन्य हस्ताक्षरकर्ता राष्ट्रका सरकार तथा धारा ४ अनुच्छेद (ख) बमोजिम सदस्यता प्राप्त गरेका राष्ट्रका सरकारहरू समक्ष सम्प्रेषित गर्नेछ ।

तल हस्ताक्षर गर्नेहरूको रोहबरमा अधिकारप्राप्त रुपमा यस विधानमा हस्ताक्षर गरिएको छ ।

संयुक्त राष्ट्रसंघको प्रधान कार्यालयमा आज मिति २६ अक्टूबर १९५६ मा यो कार्य सम्पन्न भएको छ ।

# परिशिष्ट

**प्रारम्भिक (तयारी) आयोग**

क. यो विधान हस्ताक्षरका लागि राखिएको पहिलो दिनदेखि एक प्रारम्भिक (तयारी) आयोग बन्नेछ । यसमा अष्ट्रेलिया, बेल्जियम, ब्राजिल, क्यानाडा, चेकस्लोभाकिया, फ्रान्स, भारत, पोर्चुगल, दक्षिण अफ्रिका संघ, सोभियत समाजवादी गणतान्त्रिक संघ, संयुक्त अधिराज्य ब्रिटेन तथा उत्तरी आयरल्याण्ड तथा संयुक्त राज्य अमेरिकाबाट एक-एक जना प्रतिनिधि तथा, अन्तर्राष्ट्रिय आणविक उर्जा एजेन्सीको विधान सम्बन्धी अन्तर्राष्ट्रिय सम्मेलनबाट छनोट भएका अन्य छ वटा देशका एक-एकजना प्रतिनिधि रहनेछन् । प्रारम्भिक आयोग यो विधान लागू नहुँदासम्म तथा त्यस उप्रान्त महासम्मेलनको आयोजना भएर धारा ६ बमोजिम निर्देशक समिति चयन नहुँदासम्म कायम रहनेछ ।

ख. प्रारम्भिक आयोगको खर्च संयुक्त राष्ट्रसंघले उपलब्ध गराएको ऋण सापटीबाट सञ्चालन हुनेछ तथा यस उद्देश्यका लागि प्रारम्भिक आयोगले एजेन्सीद्वारा ऋणको फिर्ता भुक्तानीको व्यवस्था समेत संयुक्त राष्ट्रसंघका उपयुक्त निकायहरूसमक्ष आवश्यक व्यवस्था मिलाउनेछ । यसरी उपलब्ध कोष अपर्याप्त भएमा प्रारम्भिक आयोगले सरकारहरूबाट पेश्की स्वीकार गर्न सक्नेछ । यस्ता पेश्कीहरू एजेन्सीसित सम्बद्ध सरकारहरूले गर्नुपर्ने योगदानमा सामञ्जस्य गर्न सकिनेछ ।

ग. प्रारम्भिक आयोगले देहायबमोजिम गर्नेछ :

(१) आफना पदाधिकारीहरूको चयन गर्नेछ, आफनो कार्यविधि सम्बन्धी नियमहरू निर्माण गर्नेछ, आवश्यकता भएबमोजिम पटकपटक बैठक बस्नेछ, बैठकस्थल आफैले तय गर्नेछ तथा आवश्यकता महसुस भएबमोजिम विभिन्न कमिटीहरु निर्माण गर्नेछ;

(२) उल्लेखित अधिकार एवं आयोगले निर्धारण गरेका कामकर्तव्यहरू निर्वाह गर्न एकजना कार्यकारी सचिव एवं अन्य आवश्यक कर्मचारी नियुक्त गर्ने;

(३) अस्थायी प्रस्ताव एवं कार्यविधिसम्बन्धी नियमहरूको मस्यौदा गर्ने लगायत महासम्मेलनको पहिलो सभाको व्यवस्थापनको चाँजोपाँजो मिलाउने, यस्तो सभा विधान लागू भएपछिको अवस्थामा छिटोभन्दा छिटो आयोजना गर्नुपर्नेछ;

(४) धारा ६ को उप अनुच्छेद क १ एवं क २ तथा अनुच्छेद ख बमोजिम पहिलो निर्देशक समितिमा चयन हुने सदस्यहरूको पदीय वर्गीकरणको व्यवस्था गर्ने;

(५) महासम्मेलनको पहिलो सभाको निमित्त तथा एजेन्सीले तत्काल ध्यान दिनुपर्ने देहायका समेत अन्य सरोकारका विषयहरू सम्बन्धमा निर्देशक समितिको पहिलो बैठकका निमित्त अध्ययन, प्रतिवेदन एवं सिफाशिहरू तयार पार्ने; लगायत

(क) एजेन्सीको वित्तीय अवस्था सम्बन्धी पक्ष;

(ख) एजेन्सीको प्रथम वर्षको कार्यक्रम तथा आयव्यय विवरण;

(ग) एजेन्सी सञ्चालनको अग्रिम योजनासँग सम्बन्धित प्राविधिक समस्याहरू;

(घ) एजेन्सीको स्थायी कर्मचारीतन्त्रको स्थापना; तथा

(ङ) एजेन्सीको प्रधान कार्यालय रहने स्थायी स्थान;

(६) निर्देशक समितिको पहिलो बैठकका निमित्त एजेन्सीको हैसियत परिभाषित गर्दै प्रधान कार्यालय सम्बन्धी सम्झौताका प्रावधान सम्बन्धमा तथा एजेन्सी एवं सम्बद्ध आतिथेय सरकारबीचको सम्बन्धमा रहने अधिकार एवं दायित्वहरू सम्बन्धमा आवश्यक सिफारिश एवं प्रस्तावहरू प्रस्तुत गर्ने;

(७) (क) यस विधानको धारा १६ बमोजिमको मस्यौदा सम्झौताको तयारी सम्बन्धमा संयुक्त राष्ट्रसंघसित सम्झौता गर्ने, यस्तो मस्यौदा सम्झौता महासम्मेलनको पहिलो सभा एवं निर्देशक समितिको पहिलो सभामा पेश गरिनेछ; तथा

(ख) यस विधानको धारा १६ मा उल्लेख भए बमोजिम एजेन्सी र अन्य अन्तर्राष्ट्रिय संगठनहरूबीचको सम्बन्धबारे महासम्मेलनको पहिलो सभा तथा निर्देशक समितिको पहिलो बैठकका निमित्त प्रस्ताव एवं सिफारिशहरू प्रस्तुत गर्ने ।